# ब्रह्मायणी

(श्री ताम्राकार ब्रह्मायणी गुठी, पनौतीको स्मारिका)

## रजत वर्ष २०८०






**प्रकाशकः**

**प्रा.डा. सुमन राज ताम्राकार**

**चण्डेश्वरी श्रेष्ठ ताम्राकार**

**विशेष सल्लाहकार**
विश्वनाथ ताम्राकार

**सल्लाहकार**
तुयुकाजी ताम्राकार

**प्रधान सम्पादक**
प्रा.डा. सुमनराज ताम्राकार

**सम्पादन सहयोगी**
लक्ष्मीकृष्ण ताम्राकार
उत्तमकृष्ण ताम्राकार
राजु ताम्राकार
सुरेन्द्र ताम्राकार
बसन्त ताम्राकार
प्रशान्त ताम्राकार

**आवरण फोटो**
प्रशान्त श्रेष्ठ, पनौती

# सम्पादकीय



श्री ताम्राकार ब्रह्मायणी गुठी पुनर्स्थापना भएको करिब पन्ध्र वर्षपछि यसै गुठी अन्तर्गत रहेको शैक्षिक तथा सम्मान उपसमिति मार्फत् २०७० सालमा पहिलो पटक 'ब्रह्मायणी' नामक स्मारिका प्रकाशनमा ल्याएको थियो। यो पटक ब्रह्मायणी गुठी २५ वर्ष (रजत वर्ष) पुगेको उपलक्ष्यमा स्मारिकालाई अद्यावधिक गरी प्रकाशनमा ल्याएका छौं । यस पटकको स्मारिकालाई अझ बढी सुन्दर बनाई यसमा ब्रह्मायणी गुठी अन्तर्गत भएका सम्पूर्ण गतिविधिहरु, गुठीयारहरुले पालना गर्नुपर्ने विभिन्न महत्वपूर्ण नियमहरु एवं विधिहरु तथा गुठीयारहरुको सचित्र परिचय समेटेका छौं । साथै, मेरो हजुरबुबा रत्नबहादुर ताम्राकार, बुबा पुष्पराज ताम्राकार, आमा गुणलक्ष्मी ताम्राकार र दाई रुपराज ताम्राकारको स्मृतिमा प्रकाशन गर्ने गरी यसपटकको स्मारिकाको लागि आवश्यक सम्पूर्ण आर्थिक व्ययभार मैले बहन गरेको छु । यसपटकको स्मारिका प्रकाशनमा अन्य सबै गुठीयारहरु आवश्यक सहयोग प्राप्त भएको छ । यसको लागि सबैमा धन्यवाद छ ।

*जय श्री ब्रह्मायणी माई !*

**प्रधान सम्पादक**
**प्रा.डा. सुमनराज ताम्राकार**

# स्मरणमा



स्व. रत्नबहादुर ताम्राकार



स्व. पुष्पराज ताम्राकार



स्व. गुणलक्ष्मी ताम्राकार



स्व. रूपराज ताम्राकार

# गुठी नायोको शुभकामना

मिति : २०८०/०९/०८



## शुभकामना सन्देश



यस ताम्राकार ब्रह्मायणी गुठी, पनौती २०५६ सालमा पुनः सञ्चालनमा आएको पनि २५ वर्ष पुग्न लाग्यो । यस अवसरमा २०७० सालमा यसै गुठीको शैक्षिक तथा सम्मान उपसमितिबाट प्रकाशित ब्रह्मायणी (स्मारिका) परिमार्जन र अद्यावधिक भई प्रकाशन हुन लागेकोमा निकै खुशी छु । यस गुठीको शैक्षिक तथा सम्मान उपसमितिको तर्फबाट स्मारिका प्रकाशनको लागि आर्थिक प्रायोजन एवं सम्पादनको जिम्मेवारी लिई स्मारिका प्रकाशनमा ल्याएकोमा यस गुठीका सदस्य प्रा.डा. सुमनराज ताम्राकारलाई म, गुठी मूल समिति र सम्पूर्ण गुठीयारहरुको तर्फबाट हार्दिक शुभकामना व्यक्त गर्न चाहन्छु ।

*ब्रह्मायणी माताकी जय ! जय पनौती ब्रह्मायणी गुठी !!*

**विश्वनाथ ताम्राकार**
नायो
श्री ताम्राकार ब्रह्मायणी गुठी
पनौती, काभ्रे

# ताम्राकार ब्रह्मायणी गुठीबारे



**विश्वनाथ ताम्राकार**

नेपालमा राजनैतिक परिवर्तन सँगसँगै विभिन्न कालखण्डमा समाजमा चलिआएका विभिन्न व्यवस्थालाई नेवार समाजले अंगिकार गरे । समाजमा चलिआएको रीतिरिवाज, धार्मिक अवस्थादेखि लिएर आपसमा मिलिजुली समन्वय गर्ने, एकले अरुमा गरिने सद्भाव शुरुका दिनदेखि आजसम्म रहिआएको प्रत्यक्ष रुपमा प्रत्येक नेपालीहरुले अनुभूति गरेको हो । त्यसमा पनि सबैभन्दा महत्वपूर्ण कुरा नेवार नेपालको आदिवासी भूमिपुत्र पनि हो । नेवारहरु जहाँ जहाँ बसेका छन्, आफ्नो समूहबीचको एकता कायम गरेर सामाजिक, आर्थिक, धार्मिक सुदृढको लागि आफ्नो इमान्दारितालाई अगाडि सारेर मूल्य र मान्यताको आधारमा साँस्कृतिक चालचलन विविध क्षेत्रमा आफ्नो पहिचानलाई अगाडि बढाएर आफ्नो अस्तित्व कायम गरेको देखिन्छ ।

पनौती बजार नेवारहरुको धेरै पुरानो बस्ती हो । यहाँ नेवारहरुको इतिहास ज्यादै पुरानो छ । त्यसमा पनि एकै ढुंगामा अवस्थित पनौती भूकम्पबाट सुरक्षित सानो शहरको रुपमा आफ्नै पहिचान सहित आकर्षक रुपमा विद्यमान छ । यहाँको नेवारी बस्तीले एक आपसमा एकता कायम गरेर नमूना कायम गरेको छ । त्यो अतुलनीय, अमूल्य र अरुको लागि उदाहरणको रुपमा रहेको छ । समाजमा रहँदा, बस्दा विकास कार्य गर्न जसरी विभिन्न संघसंस्थाहरु भए जस्तै गुठी पनि एक संस्थाको रुपमा विकास भएको देखिन्छ । यसको पनि आफ्नै उद्देश्य, नियमहरु हुन्छ, जसको पालना नगरे दण्ड सजायको पनि व्यवस्था रहेको पाइन्छ । पनौती ऐतिहासिक, धार्मिक, मन्दिर नै मन्दिर भएको एउटा सानो शहर भएतापनि यहाँ थुप्रै चाडपर्वका साथै जेष्ठ पूर्णिमामा ठूलो जात्रा मनाउने गरिन्छ । साथै यो एउटा पुण्यस्थल पुरातात्विक महत्व बोकेको शहर पनि हो । लिलावती, पद्मावती र रुद्रावतीको संगम त्रिवेणीघाटमा प्रत्येक बाह्र वर्षमा मकर मेला लाग्ने गर्दछ । वि.सं. २०५३ साल माघदेखि ६ वटा गा.वि.स. मिलि पनौती शहर पनौती नगरपालिकामा परिणत भएको हो ।

पनौती शहर बजारभित्र नेवारहरु विभिन्न जातमा फैलिएका छन् । त्यसमध्ये ताम्राकार, सैंजु, कर्माचार्य आदि प्रमुख छन् । यहाँ विभिन्न नेवार जातिहरुले विभिन्न गुठी संचालन गरिरहेका छन् । कुनै एक जाति मात्रै मिलेर त कुनै विभिन्न जात मिलेर गुठी संचालन भईरहेको पाइन्छ तर गुठीको मुल उद्देश्य एकता कायम गर्नु हो । विशेष गरेर मानिसहरु मर्दा पर्दा मृतकको दाहसंस्कारदेखि मृतकको नाममा वर्ष दिन सम्म गरिने काममा गुठीको ठूलो भूमिका रहेको पाइन्छ ।

पनौती शहरमा संख्याको हिसाबले बाहुल्य भएको ताम्राकारहरुको दुईवटा भिन्नाभिन्नै गुठी सञ्चालन भइरहेको छ । ब्रह्मायणी ताम्राकार गुठी शायद पनौती शहरको एकल जातको ठूलो परिवारहरुको ठूलो जमात भएको गुठी हो । यस ब्रह्मायणी गुठीमा हाल ३५ परिवार सम्मिलित छन् । यो गुठी प्रत्येक वर्ष मंसिरदेखि पौष मसान्तसम्ममा गर्ने चलन छ । प्रत्येक वर्ष यो गुठी एकपछि अर्कोले अनिवार्य रुपमा पालैपालो विधिपूर्वक लिनुपर्दछ । साथै पालो लिने गुठीयारले थाम्पा भैरवको पूजा (बुसाराँ) गुठी पनि चलाउनु पर्दछ ।

ताम्राकार गुठीको पालो लिने गुठीयारले समय समयमा आवश्यक मिटिङ्ग राख्ने, कुनै गुठी सदस्यको मृत्यु हुँदा गुठीयारहरुलाई खबर गरी जम्मा गराउने, गुठीमा बनाएको नियम विशेष गरेर मृत्युको समयमा कस-कसले लास बोक्ने र लास जलाउन सहयोग गर्ने जस्ता विषयमा भूमिका खेल्नुपर्छ । साथै, गुठीको अन्तिम दिन पालो लिनु अगाडि भोजको अन्त्यसम्म गुठीयारहरुमध्ये ५ जनाको मुल समितिबाट आवश्यक नीति नियम, काम घोषणा गर्नेछ । भोजमा भाग राख्दा नायो भाग र पालो लिनेको लागि छुट्टै भाग राखिन्छ । पालो पर्ने गुठीयारका दिदीबहिनी, छोरीचेली, आफन्तहरुले गुठीको मुख्य भोजमा मिठाई एवं फलफूल थप्ने चलन छ । नायोको उपस्थितिमा गुठी चलाउनेले अर्को पालो लिनेलाई सबैको रोहबरमा देउता जिम्मा दिनेदेखि सबै कागज पत्र, गुठीको सामान जिम्मा दिने काम गर्छ । त्यसपछि सबै मिलेर पालो लिनेको घरमा खुसियालीका साथ ब्रह्मायणी देवीको जय जयकार गरेर पालो लिनेको घरमा स-सम्मान भित्र्याउने गर्दछ । उपस्थित गुठीयारहरु सबैलाई पालो लिनेले विधिपूर्वक नेवारी परम्पार अनुसार जलपानको व्यवस्था गरेको हुन्छ । यसरी गुठीको काम समापन हुन्छ । गुठी पालो लिनेले गुठीको भोलिपल्ट आफ्ना पुऱ्याउन आएको पालो भोजलाई छोरी, फुपु, दिदीबहिनीहरुलाई वितरण गर्दछ । यस ताम्राकार गुठीको आफ्नै भवन बनिसकेको छ । हाल उक्त भवनमा नै गुठीको आवश्यक काम संचालन भईरहेको छ । एस.एल.सी./एस.ई.ई. तथा प्लस दुई उत्तीर्ण गरेका गुठीयारका छोराछोरी तथा नाती नातिनीहरुलाई पुरस्कार सहितको सम्मानका साथै अग्रजलाई मरणोपरान्त सम्मानको पनि व्यवस्था गरिएको छ । ❋

# ताम्राकार ब्रह्मायणी गुठीका केही प्रसङ्ग



**तुयुकाजी ताम्राकार**

ताम्राकार ब्रह्मायणी गुठीबारे केही लेख्नुभन्दा अघि माता ब्रह्मायणी भगवतीसित ताम्राकारहरुको साइनो सम्बन्धबारेमा धेरैजना बूढापाकाहरुसित सोधखोज गर्दा थाहा पाएका केही जानकारीहरु उल्लेख गर्न चाहन्छु ।

१. देवी ब्रह्मायणीलाई ताम्राकारहरुले आफ्नो छोरीचेली वा कन्या हो भन्ने विश्वासका साथ मान्ने र पूजा गर्ने गरिन्छ ।

२. दशैंको द्वादशीको दिन देवी ब्रह्मायणीको पूजा ताम्राकारहरुले मात्र गर्ने गर्दछन् ।

३. त्यसैकारण ब्रह्मायणी देवीको गरगहनाहरु ताम्राकारहरुले प्रत्येक सालमा सफा गरिदिने गर्दछन् ।

४. पनौती जात्राको बेला ब्रह्मायणीको खट (सानो रथ) ताम्राकारहरुले बनाइदिने गर्दथे । साथै देवीको मूर्ति बोकेर ल्याई खटमा राखिदिने र जात्रा सम्पन्न भएपछि द्योछें पुऱ्याउने गर्दा आफूहरुले गौरव मान्थे ।

५. दशैंमा कोटमा काटेको राँगोको एउटा खुट्टा (साँप्रा) ताम्राकार गुठीको नायोलाई बुझाउन ल्याउने चलन थियो । खुट्टाको साँप्रो बुझाउन ल्याउने (कसाईं) लाई पाहाँ खुवाएर पठाउनु पर्ने चलन थियो ।

त्यसैकारण ब्रह्मायणी देवीको खट यात्राको बेलामा अन्त कतै नबिसाइकन ल्याई ताम्राकार टोल अर्थात् नायोको घर अगाडि रोक्नु पर्दछ । नायो र अन्य श्रद्धालुहरुले समेत हाँसको फुल चढाई पूजा गर्नु पर्दछ । यो चलन चाहिँ यद्यपि चलेकै छ । अन्य बुँदाहरुमा उल्लेखित प्रसङ्गमा अनियमितता आएको देखिन्छ ।

तत्कालीन समयमा सातसय जनसंख्या रहेको एउटा सानो शहरको बस्ती पनौतीको स्थापना गर्दा बस्ती निर्माताहरुले बाढी, पहिरो, भूकम्प, रोगव्याधी, अनिकाल आदि ग्रहदशाबाट रक्षा गर्न चाहेका थिए । त्यसैको निम्ति धार्मिक र तान्त्रिक शक्तिको विधिबाट पनौती चार दिशामा चार दैविक शक्तियुक्त भगवती स्थापना गरेका थिए । पूर्व

उत्तरमा ब्रह्मायणी, पूर्व दक्षिणमा संकटा, पश्चिम उत्तरमा मानेश्वरी र पश्चिम दक्षिणमा काठंकुमारी । तिनै चार देवीहरुले पनौतीको रक्षा गरिरहेका छन् भन्ने विश्वास जनमानसमा रहेको पाइन्छ । तिनै मध्येका एक माता ब्रह्मायणी हामी ताम्राकारहरुको गुठीको पूज्य ईष्ट देवीका रुपमा रहेका छन् । ताम्राकार ब्रह्मायणी गुठी विषयमा लेख्न बस्दाबस्दै उपरोक्त कुराहरु सबैले थाहा पाउन राम्रो हने ठानेर लेखेपछि पनौतीमा ताम्राकारहरु कहिले र कसरी आइपुगे भन्ने विषयतिर पनि मेरो ध्यान गयो र मैले थाहा पाएका कुराहरु उल्लेख गर्दछु ।

उहिले नेपाल उपत्यकामा मल्ल शासनकाल छँदै पनौतीका राजा वा शासकले पाटनबाट दुईजना ताम्राकार मिस्त्रीलाई झिकाएको रहेछ । काम थियो यता कलाँती, रोशी, ढुंखर्क, डाँडापारी क्षेत्रबाट ल्याएका फलामका काँचो पदार्थ खार्नु थियो । भत्था इन्द्रेश्वर क्याम्पसको आसपासमै थियो भन्ने कुराको प्रमाण सजिलै पाइन्छ । त्यस कामको निम्ति आएका ताम्राकारहरु नै आजका ताम्राकार ब्रह्मायणी गुठीका खलक हुन् । आज पनौतीमा करिब ५५ परिवारको संख्यामा ताम्राकारहरु रहेका छन् भने दुई वटा गुठी छन् ।

समयक्रममा आफ्ना कुल कुटुम्बहरुको कुनै परिवारको सदस्यको मृत्यु हुँदा लास बोक्न, सद्गत गर्न र जलाउनका साथै विवाह ब्रतबन्धको अवसरमा सरसहयोग लिन दिन दाजुभाई कुटुम्बहरु नै आवश्यक पर्ने भएकोले गुठीको आवश्यक हुन गएको हो । यसरी गठित ताम्राकार ब्रह्मायणी गुठीको संचालनको भएको झण्डै दुई सय वर्ष हुन पुगेको छ ।

दुःखमा मात्र होइन खुसीमा पनि दाजुभाईको साथ सँगसँगै हाँस्ने, खाने, पूजापाठमा रमाउन नै वर्षमा एकपटक सबै गुठीयारहरु मिले र ब्रह्मायणी भगवतीको पूजा गर्ने गरि आएको हो । अझै केही वर्ष पहिलेदेखि ताम्राकार ब्रह्मायणी गुठीले नै पालैपालो प्रत्येक सालको फागुन, चैत्रमा होली पूर्णिमाको छेकोमा बुसाराँ पूजा गर्ने चलन पनि शुरुवात भैसकेको छ । खुसीले रमाउन, खान र दाजुभाईहरुको एकताबद्ध मिलनलाई अझ संगठित बनाउन नै हो भन्ने सबैले बुझ्नु पर्दछ । हाम्रा सन्तानहरुले पढाईमा एसएलसी वा एसईई वा प्लस टु लगायतका अन्य उच्च शिक्षा प्राप्त गर्दा उनीहरुको हौसला बढाउन गुठीयारहरुको तर्फबाट प्रशंसापत्र दिन शैक्षिक तथा सम्मान उप-समिति बनाएको छ ।

खानपिन र भोजमा कोही कोहीले अलि बढी मापसे गर्दा समस्या पार्ने गरेका पनि हुन सक्छन् । त्यस्ता गुठीयारहरुले गर्दा सिङ्गो गुठीकै बदनाम हुनसक्ने भएकोले समयमै सचेत हुन आवश्यक छ । एक आपसमा हामी दाजुभाईहरुबीच प्रेम, सद्भाव, सहयोगको वातावरण बनाउनु सबैको कर्तव्य हो । दम्भ, घमण्ड, हेपाइ, गाली गलौजको वातावरण हामी कसैले बनाउनु हुँदैन । मर्दा पर्दा होस् जा भोजको अवस्थामा एकताबद्ध सहयोग हुनुपर्दछ । यसैको निम्ति हाम्रो नियमावली पनि छँदैछ । सबैले मिलेर लागू गरौं । सुदृढ गुठी बनाऔं ।

*जय ब्रह्मायणी माता ! जय ताम्राकार ब्रह्मायणी गुठी !!* ⁂

# ब्रह्मायणी माई



प्रा.डा. सुमनराज ताम्राकार

ब्रह्म अर्थात् विवेक, सोच । आयान अर्थात् गन्तव्य । यी दुई शब्दबाटै ब्रह्मायणी व्युत्पत्ति भएको मानिन्छ । मानव जीवनमा विवेक, सोच निकै महत्वको विषय हो । विवेक, सोच भन्ने कुरा धन र शिक्षा भन्दा निकै माथि हुन्छ । ज्ञान, बुद्धि प्राप्त भएपछि विवेक, सोचमा परिवर्तन आउँछ तर विवेकशील हुन निकै त्याग चाहिन्छ । ब्रह्म भनेको प्रस्फुटन पनि हो । प्रस्फुटित हुने भनेको पूर्व दिशाबाट नै हो । त्यसो भएर पनि ब्रह्मायणीको स्थान सदैव पूर्वी दिशामा हुन्छ । ब्रह्मायणीको रङ्ग पहेंलो हुन्छ । सूर्यको किरण पनि पहेंलै हुन्छ । र, सूर्य पूर्व दिशाबाट नै उदाउँछ । सूर्यको तेज चहकिलो हुन्छ । त्यसैले पनि सुत्ने बेला ( शयनको क्रममा) पूर्वतिर टाउको पार्नु श्रेयस्कर हुन्छ ।

ब्रह्म भनेको विचार पनि हो । विचार नै नभईकन कुनैपनि कुराको सिर्जना गर्न सकिँदैन । ताम्राकारहरुको (विशेषतः पनौती, काठमाण्डौ उपत्यकाका) पुर्ख्यौली पेशा गरगहना बनाउनु एवं तामा, पित्तलका घरायसी भाँडाकुँडा बनाउनु हो । ताम्राकारहरुले यी सामानहरु बनाउने मात्र होइन, यसलाई निकै आकर्षक बनाउन बुट्टा निकाल्ने, सिँगार्ने पनि गर्दछन् । त्यसो भएर यसका लागि ब्रह्मायणीको कृपा पाउनु, आशिष पाउनु अहोभाग्य पनि हो, र आवश्यकता पनि हो ।

सारा हिन्दू धर्मावलम्बीहरुले ब्रह्मालाई सृष्टिकर्ता, विष्णुलाई पालनकर्ता र महेश्वरलाई संहारकर्ताका रुपमा ग्रहण गर्दछन् । जसै महेश्वरी महेश्वरको शक्ति, कौमारी स्वामी कार्तिकेयको शक्ति, वैष्णवी विष्णुको शक्ति, वाराही वराहको शक्ति, नारसिंही नृसिंहको शक्ति, इन्द्राणी इन्द्रको शक्ति र बह्मायणी ब्रम्हाको शक्ति मान्ने गरिन्छ । अष्टमातृका गणद्वारा मानिसका विभिन्न अङ्ग प्रत्यङ्गको रक्षा गर्ने तान्त्रिक मत रहेको हुनाले लोकमा पूजनीय भएका हुन सक्छन् ।



ब्रह्माणी अर्थात् ब्रह्मायणी ब्रह्माको शक्ति हुन् । कमण्डलु बोकेको हाँसमाथि बसेको गरगहनाले शोभित भएकी देवीले रक्षा गरुन् कामना गरिन्छ । ब्रह्माणीले आफ्नो कमण्डलुको जल छर्केर शत्रुको बल र पराक्रम नष्ट गर्ने गर्छिन् । भद्रकालीले घाँटी, वाराहीले आयु, वैष्णवीले धर्म, इन्द्राणीले गोत्र र कुल, महालक्ष्मीले छोराछोरी, भैरवीले पत्नीको रक्षा गरे जस्तै 'शुक्तं ब्रह्माणी ! मे रक्षेच्छाया' हे ब्रह्माणी ! तिमीले मेरो वीर्यको रक्षा गर भनेर पुकारिन्छ । यसले आफ्नो सन्ततिको निरन्तरता दिन मद्दत गर्दछ ।

कुनै पनि देवीदेवताको हातको भावभङ्गीलाई मुद्रा भनिन्छ । दुईटा हातको औंलाहरुको भावभङ्गीबाटै विभिन्न मुद्राहरुको सिर्जना हुन्छ । र, यही मुद्राको अध्ययनकै भरमा देवीदेवताका विभिन्न रुपको व्याख्या गरिन्छ । ब्रह्मायणीको चारवटा हातमध्ये एउटाले पात्र र अर्कोले यस्तै ध्यान मुद्रा बनाइरहेको देखिन्छ भने बाँकी दुईवटा हातमध्ये एउटाले जपमाला र अर्कोले कमलको फूल समाइरहेको देखिन्छ । यी सबै प्रतीकात्मक तवरले प्रस्तुत गरिएका छन् । कुनै पनि कुरा सिर्जना गर्नु अगाडि ध्यान अर्थात् एक चित्त हुन आवश्यक छ । त्यसैगरी पात्र (थाप्ने भाँडो) ले जस्तै अरुबाट पनि विचार ग्रहण गर्न सक्नुपर्छ । अन्यको विचारलाई पनि ध्यानपूर्वक सुनी उचित महत्व दिन जान्नुपर्छ । त्यसो भएको खण्डमा मात्र कमलको फूल भैंं आफूमा नवविचार, सिर्जनाको प्रस्फुटन हुन्छ ।

ब्रह्मायणी देवीले हाँसलाई वाहन बनाएको छ । हाँसकै बानी व्यहोरा विश्लेषण गर्ने हो भनेपनि जत्तिसुकै फोहर, रछ्यानमा हाँसले मुख जोतेपनि आफूलाई काम लाग्ने ग्रहण गरेर बाँकी तत्व बाहिरै फ्याँक्दछ । ब्रह्मायणी माईको माथि सूर्यको आभा स्वरुप शिरको चारैतिर बुट्टा खोपिएका हुन्छन् भने ब्रह्मायणी माई आफैं कमलको आसनमाथि विराजमान भइरहेको देखिन्छ । र, माताको दायाँबायाँ तलतिर भक्तहरु नमस्कार भावमा रक्षा दिइरहेको देखिन्छ ।

नेपालभरि ब्रह्मायणी माई पुजिने धेरै ठाउँहरु छैनन् । काठमाडौं कमलादीको पासिको अजिमा (ब्रह्मायणी), ललितपुरको सानेपाको ब्रह्मायणी, भक्तपुरको तौलाछेंको ब्रह्मायणीभन्दा पनौतीको ब्रह्मायणी पीठको पद्धति र प्रणालीमा फरक छ । र, पनौतीमै पनि ताम्राकारहरुको ब्रह्मायणी माई प्रतिको आशक्ति निकै पृथक छ, प्रशंसायोग्य छ ।

पनौती त्रिवेणीघाटको पूर्व दिशामा ब्रह्मायणी मन्दिर अवस्थित छ । रोशी र पुण्यमाताको दोभानमा अवस्थित ब्रह्मायणी माईको मन्दिर मुन्तिरबाट मकरमेला एवं अन्य विशेष अवसरमा रुद्रावती (पार्वती) बहने गरेको कारण त्रिवेणी नामाकरण गरिएको मानिन्छ

। पुण्यमाता नदीको उत्तरतर्फ रहेको ब्रह्मायणी माईको मन्दिर तीनतल्ले प्यागोडा शैलीमा रहेको छ । मन्दिरको मुख्य प्रवेशद्वार पनि उत्तराभिमुख छ । मन्दिरभित्र ब्रह्मायणी माईसँगै देब्रेतिर कुमार रहेको छ भने दायाँतर्फ भद्रकाली (पश्चिमाभिमुख) र देब्रेतर्फ भैरव (पूर्वाभिमुख) रहेको छ । यी सबै मूर्तिमाथि ढुंगाकै तोरण स्थापित छ । ब्रह्मायणी माईको ठिक अगाडिपट्टि तीनवटा पात्रहरु र बीचमा धातुबाट निर्मित षट्कोण अंकित छ । र, मन्दिरको बीचतिर जज्ञकुण्ड रहेको छ । पनौती जात्रा अन्तर्गत कुल्क्याः को दिन दुईंचा न्यायकेगु कार्यक्रमपछि ब्रह्मायणी र भद्रकाली माईलाई विराजमान गराई रातभर शिलावती जज्ञ गरिन्छ ।

ब्रह्मायणी मन्दिरको पश्चिमपट्टि रहेको नेपाल सम्वत् ८३६ को शिलालेख अनुसार रणजीत मल्ल र विश्वलक्ष्मीको पालामै यो मन्दिर निर्माण एवं यसको संचालानर्थ गुठीको व्यवस्था गरिदिएको देखिन्छ । ब्रह्मायणी माईको मन्दिरको प्रत्येक तल्लाको ढोका झ्याल माथि तोरण (छेफो) र टुँडालमा देवीदेवता कुँदिएका छन् । माहेश्वरी, ब्रह्मायणी, महालक्ष्मी, कुमारी, वैष्णवी, ईन्द्रायणी, महाकाली, वाराही, तार, भैरव कुँदिएका छन् । यी मध्ये कतिपय त हाल चोरी पनि भैसकेको छ । त्यसैगरी मन्दिरको भित्रपट्टि माथिल्लो तल्लोमा अष्टमातृका र अष्टभैरवको चित्र कुँदिएका छन् ।

त्यसैगरी ब्रह्मायणी माईको द्योछें भने ताम्राकारहरुकै बाक्लो बस्ती रहेको अघाटोलको सिरानी सोह्रखुट्टे पाटीसँगै रहेको छ । जात्रा, पर्व बाहेक अन्य बेला ब्रह्मायणी माईको मूर्ति यहीँ राखिन्छ । र, ब्रह्मायणी माईको नित्य पूजा, नियमित पूजा यहीँ गरिन्छ । भूईंतल्ला सहित तीनतल्ला रहेको ब्रह्मायणी द्योछेंका झ्यालहरु (विशेषतः माथिल्लो तल्लाको) आकर्षक छन् भने प्रवेशद्वार (मूलढोका) र पहिलो तल्लाको बीचको झ्यालमाथि तोरण राखिएको छ । त्यसैगरी छानामा गजुर सहितको चारमुखे कलात्मक निर्माण रहेको छ । ईन्द्रेश्वर महादेव परिसरमा रहेको उन्मत्त भैरवको मन्दिरभित्र पनि ब्रह्मायणीको मूर्ति रहेको छ ।

*(मेरो हजुरबुबा रत्नबहादुर ताम्राकारको ब्रह्मायणी माईप्रतिको भावभक्ति देखेर, समर्पण देखेर पनि यो लेख लेख्न जाँगर चलेको हो । यो लेख हजुरबुबाप्रति समर्पण गर्न चाहन्छु ।)*

(नोट : वरिष्ठ संस्कृतिविद् तेजेश्वरबाबु ग्वंगसँगको कुराकानीमा आधारित)



# थाम्पा भैरवको किंवदन्ती



**प्रताप ताम्राकार**

स्वर्गीय सप्तलाल ताम्राकार तथा अन्य बूढापाकाहरु भन्नुहुन्थ्यो - कुरा सातपुस्ता पहिलेको, बुबा, बाजे, बराजु, अनि त्यो भन्दा माथिको । पनौतीका ताम्राकार यौवनावस्थाका एक युवकको । बिजुली बत्तीबिनाको समय, टुकीबत्ती पालाको, टि.भी. तथा सिनेमाहरु कल्पनामा समेत नभएको बेलाको ।

सातपुस्ता पहिलेका ताम्राकार पूर्खाका त्यो युवक र उसका साथीहरु पूर्णिमाको दिन टहटह जुनमा सधैं झै ठिटोपनका साथ साँझ अबेरसम्म पनौतीमा घुमघाम, (वर्तमान अवस्थाको पनौती होइन, थोरै घर, थोरै मानिस, धेरै ठाउँ जग्गा जमिन अनि ऐतिहासिक मठमन्दिर प्रचुर भएको पनौती) । बेलुकीको खाना खाइसकेपछि साथीभाइहरुसँग अँध्यारोमै भए पनि पनौतीको फन्को लाउने बानी ।

एक रात अबेरमा साथीहरुसित छुट्टिई मध्यरातमा घर फर्किने बेलामा पनौतीको ब्रह्मायणी देवघर, सोह्रखुट्टेपाटीमा सेतो वस्त्रमा एउटी तरुनी युवतीलाई युवकले देख्यो । जवान युवकलाई यौवनले ढाकिएकी युवतीले आकर्षिक गऱ्यो विभिन्न चालडाल र अंगडाईले । युवक तरुनीको नजिक गयो आकर्षित भएर । उसका साथीहरु सबै घर गइसकेका थिए । मध्यरातको बेला भइसकेको थियो । मोहनीरुप युवती जुरुक्क उठिन् र मस्किँदै रोशीखोलातर्फ झर्दै दुई मुखेपाटी (ध्वाखा फः) हुँदै त्रिवेणीघाट तर्फको बाटो लागिन्, नवयुवक पछि पछि युवती अघि अघि, जतिसुकै भेट्टाउन खोजे पनि युवकले युवतीसितको दूरी कम गर्न सकेन, जतिसुकै छिटो हिँडे पनि, एक नासको दूरीमा युवतीलाई पछ्यायो युवकले । पटक पटक चहकिलो मुस्कान र जीउ तथा अंग, नितम्ब तथा स्तनलाई मर्काउँदै, युवकलाई आकर्षित गर्दै रह्यो युवती । युवक चुम्बक झैं तानिँदै समान दूरीको अन्तरालमा युवतीलाई पछ्याई रह्यो ।

युवती पुण्य मा.वि.को बाटो हुँदै हाल ब्रह्मायणी मन्दिर जाने झोलुङ्गेपुल भएतर्फ

अघि बढ्यो । युवक होस बिनाको अवस्थामा लागिरह्यो मोहनीरुप युक्तीको पछि पछि । युवती अघि बढ्दै पुण्यमाता खोलामा रहेको ब्रह्मायणी जाने काठ र बाँसले बनेको पुलबाट (हाल झोलुङ्गे पुल रहेको स्थान) अघि बढ्यो । पुलको बीचमा युवती पुगिन्, युवकले पुलमा पाइला राख्नै लाग्यो, त्यहिबेला ब्रह्मायणी मन्दिर भित्रबाट एउटा आवाज आयो - 'नेपाँचुमा हकेधुन ला ?' (दुई खुट्टाले टेक्ने ल्याइसक्यौ ?) । युवतीको जवाफ - 'धुन, चुपी ट्वाक ठीक्क य' (ल्याइसकें अचानो र खुकुरी ठीक पार) ।

युवतीको यो प्रतिउत्तरबाट पुलमा पाइला हाल्नै लागेका युवकलाई (ताम्राकार परिवारका सातपुस्ता अघिको पूर्वज, जसका सन्तानहरु पनौतीका हालका ताम्राकारहरु हुन्) झसङ्ग होस आएजस्तो भयो । आफू त सम्भवतः किचकन्नीको पछि पो तानिँदै आएको रहेछ, आफ्नो अन्तिम अवस्था आएको महसुस गरेर पुलमा राख्न लागेको पाइला फरक्क फर्केर घुमी पुण्य मा.वि.तर्फ भागे । उसले ब्रह्मायणी मन्दिर भित्रबाट बाजागाजा सहित सामान्य हो-हल्ला सहित कसैले आफूलाई पिछा गरिरहेको चाल पाए । आफ्नो जोश र होसले भ्याएसम्म दौडँदा पनि पाइला अगाडि नबढेपछि जसोतसो पुण्य मा.वि.को गेट, इन्द्रेश्वर मन्दिर जाने पूर्वी ढोका अगाडि आइपुगी सम्पूर्ण प्राण मुखमा ल्याई अगाडिको थाम्पा भैरवको मन्दिर अगाडि (पहिले मन्दिर नभएको मूर्तिमात्र भएको खुल्ला) 'भगवान, छिगु हे शरणे' (भगवान, हजुरकै शरणमा) भन्दै त्यहीं घोप्टो परे ।

"ए, बुरा ! थाना वमा मनु गो ? गना छोया ?" (ए, बूढा ! यहाँ आएको मानिस खोई ? कहाँ पठायौ ?) एकछिनमै त्यहाँ आइपुगेका ती युवती र ब्रह्मायणी मन्दिरबाट आएकाहरुले युवकलाई नदेखेर थाम्पा भैरवलाई सोधिएको प्रश्न थियो यो । वास्तवमा त्यो युवक त्यहीं थियो उनीहरुकै अगाडि सम्भवतः थाम्पा भैरवले उनलाई छोपेर राख्यो बचाउनका लागि । 'मस्या गो, थानां या वगु मरु' (थाहा छैन खोई, यहाँ त आएको छैन) । 'छ मखुगु खाँ ल्हगु थे च्वों ए बुरा, छ वेता खानकी मथानं खँ ब्यु' (तैंले झुठो कुरा गऱ्याजस्तो छ, ए बूढा, तैले त्यसलाई देख्यो कि तुरुन्तै बोलाउनु) यति आदेश दिदै उनीहरु त्यहाँ वरपर चारैतिर त्यो युवकको खोजतलास गर्न थाले तर भेट्टाउन सकेनन् । यहि वार्तालापका क्रममा आफूले देखेको दृश्य र आफूलाई उनीहरुले भेट्टाउला भन्ने थुप्रै डरले त्यहि बेहोस् भए त्यो युवक ।

भोलिपल्ट बिहान सबेरै मन्दिर आउने मान्छेहरुले एउटा व्यक्ति थाम्पा भैरवको अगाडि घोप्टो परेर बसेको देखे । अनुहार तल परेकाले कसैले चिनेनन् । एक कान, दुई कान गर्दै मान्छेहरुको जमघट भयो । कोही एकले बिस्तारै छोए, पल्टाए अनुहार हेरे, भने 'ए यो त ताँबचा पो रहेछ ।' त्यहिबेला घर परिवार तथा अरु मान्छे पनि आए घर लगे

युवकलाई । विभिन्न उपचार पछि होस खुल्यो, युवकले बोल्न सकेन । केही समयपछि युवक सामान्य अवस्थामा आएपछि अघिल्लो रात भएको घटनाको झझल्कोका साथ बेली विस्तार लाए ।

सबैले बुझे त्यो युवकलाई थाम्पा भैरवले छोपेर नयाँ जीवनदान पाएको रहेछ । यस्तो घटनामा कोही पनि बाँच्न सक्दैन भन्दै नयाँ जीवन दिएकाले थाम्पा भैरवलाई हार्दिक कृतज्ञता र सम्मान स्वरुप नयाँ जीवनको नाममा 'बुसराँ' भन्दै खुशीयालीका साथ सिन्दुर छर्दै 'बुसराँ' पूजा गरे । त्यसबेलादेखि हरेक वर्ष होली पूर्णिमाको सात दिन अघि बुसराँ पूजा सञ्चालन भई हालसम्म पनि अद्यावधिक चलिरहेको छ । सोही खुशीयालीमा सातौ पुस्ताका ती पूर्खाले थाम्पा भैरवको वर्तमान मन्दिर निर्माण गरे, र प्रत्येक वर्ष 'बुसराँ' पूजा सञ्चालनका लागि गुठी जग्गाको पनि व्यवस्था गरे जुन हालसम्म पनि छ । भनिन्छ 'बुसराँ' पूजापछि खुशीयालीका साथ पनौतीमा होलीको पर्व प्रारम्भ हुन्छ भने पूर्णिमाका दिन बेलुकी संकटाको जात्रा पछि समाप्त हुन्छ ।

उनलाई नै थाम्पा भैरवले मेरो मात्र पूजा नगरी ब्रह्मायणी देवीलाई पनि खुसी पार भनि सुझाए, कसरी त ? बोक्नमा सबैभन्दा गह्रुँगो रथ बनाइदेऊ भनि अह्राएपछि त्यसबेला ब्रह्मायणीका लागि सबैभन्दा गह्रुँगो रथ बनाई चढाए र पूजा गरे । जसबाट ब्रह्मायणी देवी खुसी भई ताम्राकारहरुका छोरीहरु सबैभन्दा राम्री होउन् भनि आशीर्वाद दिए । तबदेखि ताम्राकारहरुका छोरीहरु राम्री र मोहिनी हुन्छिन् भनेर भनिन्छ ।

पनौतीमा यस्ता अचम्मका घट्नाका प्रत्यक्षदर्शीहरु अब जिउँदा छैनन् तर पनि उनीहरुबाट आफूले भोगेको देखेका सुनेका कुराहरुले मनलाई अचम्मित बनाउन पर्याप्त छन् । जसमध्येमा बोक्सी (बोक्सी सम्बन्धीका अनुभवीहरु त हाल पनि जिउँदा छन् र आफूले भोगेका कुरा जिउ नै सिरिङ हुनेगरि सुनाउँछन् ।) ख्याक, धेखेग्वारा ख्या, मता ख्या, उन्मत्त भैरवको चर्तिकला ... लगायत अन्य थुप्रै घटनाहरु हाल किंवदन्ती बनिसकेका छन्, वर्तमानमा मनलाई आनन्द दिने एउटा कथा बनिसकेको छ ।

*(स्रोत : जनबोली - यी घटनाहरु पूर्वजहरुबाट आफ्ना सन्तानमा मौखिक हस्तान्तरण हुँदै आएका ऐतिहासिकता हुन् जसको स्पष्ट प्रमाण भने छैन र सो समयको वास्तविकताका आधारमा खोज्न पनि सकिन्न ।)*

*साभार : स्मारक दर्पण, २०६७ पौष, संरक्षित स्मारक क्षेत्र संरक्षण समिति पनौती*



# ताम्राकार ब्रह्मायणी गुठीका कार्यक्रमहरु



राजु ताम्राकार

भगवती माता ब्रह्मायणीको वार्षिक पूजा गर्ने गरी झण्डै २५ वर्षपछि यस 'ताम्राकार ब्रह्मायणी गुठी, पनौती'को वि.सं. २०५६ सालमा पुनर्गठन भई शुरुको साल २८ गुठी सदस्यहरु सम्मिलित भई ब्रह्मायणी देवीको क्षमा पूजा गरी क्रमैसँग वार्षिक पूजा जेठादेखि सञ्चालन गरिएको छ ।

**श्री ताम्राकार ब्रह्मायणी गुठी पूजा कार्यक्रम**

**(कार्यक्रम–१) सरसल्लाह कार्यक्रम**

यस गुठीको नियमित वार्षिक पूजा सञ्चालनको लागि गुठीयारहरुबीच सरसल्लाह एवं पूजा मिति हेर्न र योजना बनाउन गुठी पालो पर्ने गुठी सदस्यले धान्य पूर्णिमा (योमर्‍ही पूर्णिमा) को झण्डै २०-२२ दिन जति अगाडि गुठीयारहरुको भेला बोलाइन्छ । यस दिन गुठी पालो पर्ने सदस्यको आफ्नो इच्छा अनुसार गुठीयारहरुलाई चिया नास्ताको व्यवस्था गर्ने गरिन्छ ।

**(कार्यक्रम–२) ४ दिन अधिको समयबजी कार्यक्रम**

पहिलो भेलाले निर्धारण गरेको '४ दिन अधिको समयबजी कार्यक्रम' को दिन गुठीयारहरु बीच गुठी सम्बन्धी सरसल्लाह एवं समयबजी खाने कार्य हुन्छ । यस दिन गुठीको राँगो काट्ने र वार्षिक पूजाको मिति निर्धारण गरिन्छ । गुठी पालो पर्ने सदस्यले यस दिनको लागि समयबजी तयार गर्नुपर्छ । समयबजीमा चिउरा, कालो भटमास, बोडी, आलु, सिमी, हरियो लसुन, छोयलाको खर्च गुठीबाट र रक्सी, इन्धन खर्च गुठी पालो पर्ने सदस्यले बेहोर्छ । समयबजी बनाउँदा देउता भाग एक भाग थप बढी राख्नुपर्छ ।

**(कार्यक्रम–३) राँगो काट्ने र समयबजी कार्यक्रम**

पूर्व निर्धारित योजना अनुसार 'राँगो काट्ने' कार्यक्रम हुन्छ । यस दिन राँगो काट्ने वा मासु खरिद गर्ने भन्ने विषयमा पूर्व भेला अनुसार गरिन्छ । यस दिनको समयबजी व्यवस्था गुठी पालो पर्ने सदस्यले गर्नुपर्छ । समयबजीमा निम्न परिकार रहेको छ ।

क) चिउरा १ माना प्रति गुठीयार

ख) तयारी कालो भटमास ५ माना

ग) तयारी आलु ३ धार्नी

घ) साँधेको हरियो लसुन ३ किलो

ङ) तयारी बोडी ५ माना

च) रक्सी (२ पटक)

छ) राँगाको मासुको छोयला (४ धार्नी गुठीबाट)

साथै, उक्त दिनबाट गुठी भोजसम्म पाल्पाली कचौराको प्रयोग गरिन्छ । यस दिन समयबजी एक भाग (देउता भाग) थप राख्ने गरिन्छ । गुठी पूजाको समयको साथै गुठी पूजाको दिन समयबजी भाग राख्ने, गुठीको मासु बनाउने, गुठीयार खुवाउने कामको लागि गुठी पालो लिने र गत वर्ष गुठी पालो दिने १/१ जना रहने व्यवस्थाको जानकारी गर्नुपर्छ ।

**(कार्यक्रम–४) वार्षिक पूजा कार्यक्रम**

पूजाको लागि तोकिएको समयमै कलाँलीमा दुईवटा हाँसको अण्डा सहित पूजासामग्री निर्धारित ठाउँमा पुऱ्याइसकेपछि सौहार्द्र वातावरणमा शोभायुक्त लामबद्ध भई ब्रह्मायणी मन्दिर प्रस्थान गरिन्छ ।

**(कार्यक्रम–५) समयबजी कार्यक्रम**

ब्रह्मायणी मन्दिरमा गई पूजा सकेपछि सबै गुठीयारहरु ताम्राकार गुठी भवनमा फर्केर समयबजी खाने कार्यक्रम हुन्छ । गुठी पालो पर्नेबाट १ पाथी चिउरा वा स्याबजी लिई गुठी प्रसाद बाँडिन्छ । यस कार्यक्रममा समयबजी प्रति गुठीयार दुई भाग राखिन्छ । जसमध्ये एक भाग घर पठाउने गरिन्छ । गुठीबाट पालो पर्ने गुठीयारलाई बोकाको मासु २.५ किलोग्राम प्रदान गरिन्छ । समयबजी खाने कार्यमा निर्धारित समयमै सबै गुठीयारहरु

उपस्थित भई जेठाबाट रोलक्रममा बसी नियममा रहेर बस्नुपर्छ। निर्धारित समयमा झण्डै ६०% गुठियार उपस्थित भईसकेपछि समयबजी कार्यक्रम शुरु हुन्छ। समय भन्दा पछि उपस्थित सदस्यहरु क्रममा तल बस्नुपर्छ र साथै जरिवाना (ब) पनि तिर्नुपर्ने हुन्छ।

'समयबजी' मा निम्न परिकार हुनेछ।

क) चिउरा १ माना प्रति भाग

ख) चटामरी २ वटा प्रति गुठीयार

ग) बारा (व) १ वटा प्रति गुठीयार

घ) तयारी कालो भटमास १० माना

ङ) तयारी आलु ६ धानी

च) साँधेको हरियो लसुन ६ किलो

ज) रक्सी २ प्याला

झ) तारेको हाँसको अण्डा १ वटा प्रति गुठीयार

ञ) छोयला मासु ७ धानी (गुठीबाट)

ट) रगती (गुठीबाट)

ठ) बोकाको गर्धनको मासु (गुठीबाट)

ड) भुटन (गुठीबाट) आदि

यस कार्यक्रममा गुठी पालो पर्नेका आफन्तजन एवं पाहुनाबाट 'ताँ वइगु' कार्य पनि समावेश हुन्छ। समयबजी भाग राख्दा थप दुई भाग (सहयोगीलाई) राख्ने गरिन्छ।

## (कार्यक्रम–६) गुठी खर्च हिसाब

गुठी पूजाको दिन गुठी खर्च हिसाब गरिन्छ। ४ दिन अघिको समयबजीको हिसाब गुठी पालो पर्ने सदस्यसँग लिनुका साथै राँगाको मासु, बोका खर्च र अन्य खर्चहरु जोडी प्रत्येक गुठीयारहरुबाट बराबर दामासाही हिसाब गरी आम्दानी खर्च हिसाब गर्नुपर्छ।

## (कार्यक्रम–७) गुठी भोज

श्री ब्रह्मायणी द्यो: अगाडि राखी निर्धारित समयमा गुठी सदस्यहरु भेला भई गुठी भोज गर्नुपर्छ। गुठीयारहरु रोलक्रममा रही शान्त वातावरणमा गुठी भोज आयोजना हुन्छ। निर्धारित समय भित्र उपस्थित नभएका गुठी सदस्यहरु पछाडिको क्रममा बस्नु पर्नेछ। गुठी

भोजमा गुठीको सर्वमान्य नियमहरु भित्र रहि आफूलाई प्रस्तुत गर्नु पर्दछ । भोजमा चटामरी १, बारा (व) १, तारेको हाँसको अण्डा १, (नपुग गुठी पालो पर्नेले व्येहोर्ने गरी) पनि राख्नु पर्छ । भोजमा 'पाचिकेउगु ब्वो' पनि राख्नु पर्छ । साथै, नकिं भाग र देउता भाग पनि राख्नु पर्छ । पाहुनाबाट 'ताँ वाइगु' हुँदा गुठीबाट नियम अनुसार सत्कार गरिन्छ । भोजको अन्त्यमा सिउ भाग दिइन्छ । सिउ भाग दायाँ आँखा, बायाँ आँखा, दायाँ कान, बायाँ कान, दायाँ बंगारा, बायाँ बंगारा, नाक (थुना), पुच्छर र जिब्रो गरि ९ भाग हुन्छ । जसमा गुठी पालो पर्ने घरको नकिंलाई जिब्रो दिइन्छ । गुठी भोजको अन्त्यमा यस वर्षको गुठीको हिसाबका साथै कुनै गुठीयार वा गुठीयारसँग सम्बन्धित सदस्य व्यक्तिको मृत्यु भएमा 'लास बोक्ने' क्रम पनि सुनाउने गरिन्छ ।

## (कार्यक्रम–८) गुठी पालो सर्ने

गुठी भोजपछि गुठी पालो पर्ने सदस्यको घर परिवारबाट श्री ब्रह्मायणी देवी दर्शन गरि सकेपछि पालो पर्ने गुठी सदस्यबाट पालो जाने गुठी सदस्यमा ब्रह्मायणी देवीको साथ विशेष वातावरणमा गुठी पालो सार्ने गरिन्छ । गुठी सदस्यहरुका साथ 'प चिकेउगु ब्वो' सहित ब्रह्मायणी देवीको स्तुति गानका साथ भोजस्थलबाट गुठी पालो सरेको गुठीयारको घरमा पुग्नु पर्छ । 'प चिकेउगु ब्वो' मा चिउरा ४ माना, चटामरी ६ वटा, १ मानाको मासको बारा १ वटा सहित अरु परिकार साबिक बमोजिम रहनेछ । पालो लिने गुठीयार कहाँ ब्रह्मायणी देवी पुऱ्याइसकेपछि गुठीयारहरुलाई सत्कार गर्ने गर्दछ । साथै, पुनः एकपटक गुठीको हिसाबमा थप चढाएको रकम भएको अवस्थामा सो समेत जोडी गुठी पालो लिने सदस्यले चाहेमा अर्को वर्षको गुठी पूजाको दिन ब्याज सहित बुझाउने गरि गुठी पुस्तिका सहित हस्तान्तरण गरिन्छ । साथै, गुठीको सरसामग्रीहरु पालो दिने र लिनेको सहमतिमा बुझ्ने बुझाउने गर्नुपर्छ ।



# बुसाराँ गुठी – एक झलक



**लक्ष्मीकृष्ण ताम्राकार**

श्री ताम्राकार ब्रह्मायणी गुठी, पनौती अन्तर्गतका गुठीयारहरुबाट गुठी पालो लिएको वर्षको फागुण शुक्ल द्वादशीका दिन पनौती स्थित 'थाम्पाङ भैरव' पूजा गर्न बुसाराँ गुठी रहेको छ । ताम्राकार परिवारबाट चलि आएको बुसाराँ पूजा यस ताम्राकार ब्रह्मायणी गुठीका गुठीयारहरुले ताम्राकार ब्रह्मायणी गुठी पालो आएको साल गर्ने गरि वि.सं. २०६३ चैत्र १६ गतेका दिन गुठीयार श्री हरिसुन्दर ताम्राकारको पालो देखि निरन्तरता कायम भइरहेको छ ।

बुसाराँ गुठीमा गुठीयारहरु बीच पूजा संचालनको लागि छलफल गर्न गुठी पालो पर्ने सदस्यले फागुण शुक्ल अष्टमी (४ दिन अघि) को दिन भेला डाक्ने गरिन्छ । फागुण शुक्ल द्वादशीको दिन पूजा कार्य हुन र पुजाको लागि व्यवस्था निम्न अनुसार रहेको पाइन्छ ।

१. गुठीबाट तोलं, अबिर, फलफूल, झण्डा

२. गुठी पालो पर्नेले कोतःमा २ वटा हाँसको अण्डा सहितको पूजा सामान

३. गुठीयारहरुले १ वटा हाँसको अण्डा सहित पूजा सामान

पूजाबाट फर्केपछि गुठीयारहरु बसी समयबजी खाने चलन रहेको छ । समयबजीमा चिउरा, बोडी, कालो भटमास, आलु, हरियो लसुन साँधेको छोयला, बोकाको गर्धनको मासु, तारेको हाँसको अण्डा, रक्सीको व्यवस्था हुने गरेको छ । बेलुका भोजको आयोजना गरी हिसाबकिताब दामासाही बराबर हुने गरी सम्पन्न गरिन्छ । भोजमा चिउरा, अचार, गोलभेडा, काउली, साग, पंचकोल, बोका मासु, भुटन, मेथी, पाउँ, दहि, सिसाफुसा परिकार हुने गर्छ । भोज, समयबजी बनाउनको लागि दुई जना कुक (गुठीयार भन्दा बाहिरको राख्नु पर्दा गुठीयारबाट मान्य हुने गरी) जसमा १ जना गुठी पालो पर्नेबाट र १

